




# फोक्सुण्डो ताल

## डोल्पा

संरक्षणमा धर्म, संस्कृति र परम्पराको महत्व

जुन २००७



तयार गर्ने : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
तस्विर : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई) / झमक बहादुर कार्की
सम्पादन : झमक बहादुर कार्की (राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग)
एलिजा स्थापित (डब्लु डब्लु एफ नेपाल)



## राष्ट्रिय प्रतिनिधिको सन्देश

सिमसार पारिस्थितिक प्रणालीको एक महत्वपूर्ण अंग हो । सिमसारले पानीको भण्डारण र स्वच्छीकरण गर्ने, स्थानिय वासिन्दाहरुलाई विभिन्न प्रकारका श्रोत उपलब्ध गराउने, विभिन्न दुर्लभ वन्यजन्तु एवं वनस्पतिलाई वासस्थान प्रदान गर्ने र धार्मिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकिय स्थलको रुपमा अतुलनिय भूमिका निर्वाह गरेको हुन्छ ।

नेपाल अनेकौं महत्वपूर्ण सिमसारको धनी राष्ट्र भएता पनि अझै यी सिमसारहरुको खोज र महत्वको विश्लेषण हुन बाँकी नै रहेको छ । तराईको कतिपय सिमसारको सर्वेक्षण तथा अनुसन्धान भई दस्तावेजहरु तयार भैसकेको छ, तर पहाडी क्षेत्रमा अवस्थित धेरै जसो सिमसारहरुको अवस्थाबारे हामी अनभिज्ञ छौं । यही जानकारीको कमिलाई परिपूर्ति गर्न डब्लु डब्लु एफ नेपालको स्वच्छ जल सम्पदा कार्यक्रम अग्रसर भएको छ ।

स्वच्छ जल सम्पदा कार्यक्रमले हाल उच्च हिमाली क्षेत्रमा रहेका सिमसारहरुको विवरण तयार गर्ने क्रम अगाडी बढाएको छ । यसै सन्दर्भमा प्रस्तुत पुस्तिकाले परम्परागत रुपले जीवन यापन गर्दै आएका आदिवासी जनजातीहरुले धार्मिक, ऐतिहासिक र सांस्कृतिक आस्था एवं विश्वासका आधारमा ती क्षेत्रका संरक्षण तथा उपयोग गरेको जिवन्त उदाहरणहरु प्रस्तुत गरेको छ ।

यो अनुसन्धान अगाडी बढाउन प्राविधिक रुपले सहयोग गरिदिनु भएकोमा राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग र आर्थिक सहयोग गरिदिनु भएकोमा डब्लु डब्लु एफ नेदरल्याण्ड्स/डब्लु डब्लु एफ ईन्टरनेशनल र डब्लु डब्लु एफ युके प्रति डब्लु डब्लु एफ नेपाल हार्दिक कृतज्ञता ज्ञापन गर्दछ ।

अन्त्यमा यस किसिमको विवरण संकलन र सो को प्रकाशनबाट अन्य क्षेत्रका सिमसारहरुको संरक्षण, सम्बर्धन र वुद्धिमत्ता उपयोग गर्न सघाउ पुऱ्याउने छ भन्ने मैले अपेक्षा गरेको छु ।

Manandhar

अनिल मानन्धर
राष्ट्रिय प्रतिनिधि
डब्लु डब्लु एफ नेपाल



अंग्रेजी वर्णमालाको "Y" अक्षरको स्वरुप अग्ला पर्वतमाला वीच दुई हत्केलाको पसर आकृतिमा लमतन्न परेर सुतिरहेको डोल्पाली सुन्दर फोक्सुण्डो ताल छिन-छिनमा आफ्नो रुपरंङ्ग परिवर्तन गर्दै प्राकृतिक रुपमा मनमोहक बन्दछ।

भौगोलिक क्षेत्रफल अनुसार नेपालको सबै भन्दा ठुलो जिल्ला डोल्पाको फोक्सुण्डो राष्ट्रिय निकुन्ज क्षेत्रमा पर्ने उक्त ताल ६५० मीटर गहिरो भएको कुरा तालकै छेउमा रहेका रिङमो बासीहरु बताउनु हुन्छ। फोक्सुण्डो गा.बि.स. मा पर्ने ताल स्वदेश र विदेश सम्म प्रख्यात भएको कुरा गाउँलेहरु व्याख्या गर्नु हुन्छ।

कार्तिक महिना देखि हिउँ पर्न शुरु हुने भौगोलिक अवस्था रहेको यस ताल समुद्री तह देखि लगभग ३,६११ मीटर उचाईमा र ४९४ हेक्टर (९,८८० रोपनी) क्षेत्रफलमा फैलिएको छ। तालको दक्षिणी कुनाबाट पोखरीको पानी बगेर १७० मीटरको झर्ना बनेको छ। उत्तर र उत्तर पूर्वी हिमालबाट पानी पोखरीमा झरेको देखिन्छ।

ऐतिहासिक तथा मैालिक परम्परा र विश्वासमा उत्पत्ति भएको फोक्सुण्डो ताल पवित्र हिमाली संकाटापन्न पारिस्थिकिय प्रणालीमा पर्ने विश्वमै महत्वपूर्ण मानिएको सीमसार हो। २०६३ सालमा रामसार सुचीमा अनुमोदनको लागि समावेश नेपालको पहिलो चार उच्च हिमाली क्षेत्रको सिमसार मध्ये यो पनि एक हो।

बौद्ध धर्म भन्दा पनि अघि अस्तित्वमा रहेको बोन पो धर्म मान्नु हुने यहाँका खाम र गुरुङ्ग जाती तिबिटो-वर्मेली भाषा बोल्दछन्। लगभग ५० घर-धुरीको संख्यामा रहेको रिङमो बासीहरुका अनुसार परम्परा, धर्म र संस्कारमा तालको पानी, रुख, ढिस्को र पर्वत आदिसंग गहिरो सम्बन्ध रहेको छ। बोन पो धर्म १८००० वर्षभन्दा पनि पहिला तोम्बा सेरान नाम गरेका व्यक्तिले शुरु गरेको भन्ने विश्वास रहेछ। साङसुङ साम्राज्य काललाई यस धर्मको स्वर्णिम युग मानिएको भन्ने तथ्यहरु पाइन्छन् बुद्ध धर्मको व्यापकताका कारण बोन पो धर्म लोपन्मुख अवस्थामा रहेको छ।

## सीमसार क्षेत्रहरू

भौगोलिक अवस्था अनुसार यहाँ साना-ठुला सीमसार क्षेत्रहरु रहेको तथ्य सहभागीहरु बताउँदछन् । कुवा तथा अन्य साना तालहरु डोल्पा जिल्लामा रहेको कुरा उनीहरुले बताउँदछन् जस्तै छार्वो ताल जो फोक्सुण्डो तालको माथिल्लो क्षेत्रमा पाइन्छ । रिखे गाउँ नजीकै तीनवटा पोखरी रहेका छन् र काई गाउँमा रहेका धार्मिक र सांस्कृतिक रुपले पवित्र हिम तालहरु दुधकुण्ड र जगदुल्ला छन् । त्यसै गरी फोक्सुण्डो तालद्वारा ऐतिहासिक मूल्य संगालेको सुन्दर फोक्सुण्डो झरनाको स्वच्छ जल सुलिगाड खोलाको शीर मानिन्छ । ठूली भेरी हिमनदी आफ्ना विभिन्न सहायक खोला आदि संग मिसिएर फोक्सुण्डो खोलामा आई मिलन हुन्छ । सुलीगाड, खानीवन, छदे, लैनी, खोरखोला, सुन दह, खाली दह, सुक दह, छमकुने ताल, दुनदह, ग्यालवारा ताल, चौथारा, कच्यारा नाहुरको नाघिर जस्ता अन्य सीमसार क्षेत्रहरु यहाँ रहेका छन् ।

## मौलिक, ऐतिहासिक, धार्मिक तथा सांस्कृतिक महत्व

पवित्र हिमालको साथमा रहेको डोल्पाली सुन्दर फोक्सुण्डो तालको उत्पति, ऐतिहासिक घटना, पुरानो भनाई, विश्वास, मान्यता, परम्परा, संस्कार तथा संस्कृति बारे विभिन्न क्षेत्रमा बसोवास गरेका गाउँलेहरुसँग छलफल गरिएको थियो । त्यसैगरी हिमाली सीमसार संरक्षण र बुद्धिमता उपयोग बारे तालिम कार्यक्रमको समयमा पनि सहभागितामूलक छलफल गरिएको थियो । फोक्सुण्डोताललाई रिङमो ताल पनि भनिंदो रहेछ । धौलागिरीको पश्चिम र काञ्जिरोवा हिमालको दक्षिण पूर्वमा पर्ने यस रमणीय ऐतिहासिक ताल लम्बाईमा ४.८ कि.मी. र चौडाईमा १.३ कि.मी. लमतन्न परेर आफ्नो रुप बदल्दै प्राकृतिसंग रमाई रहेको देखिन्छ ।



नानी खेले झैं हिमाली कोक्रोमा आफ्नो आदिम कालदेखि वायूको वेग, पृथ्वी, चन्द्र र सुर्यको चाल अनुसार छाल उठाउने सुताउने रिङमो तालको न्वारनको वा वास्तविक नाम चाँहि फोकसुम्धो ताल भएको स्थानीय समुदायहरु बताउँछन् । सावदिक अर्थमा रिङमो ताललाई फोकसुम्धो (फुक भन्नाले "भित्र" वा माथि वा भित्ता, सम भन्नाले तीन र धो भन्नाले-दोभान) भनी खाम र तरेली भाषा बोल्ने डोल्पालीहरु भन्दछन् । विक्रम सम्बत् २०२३ सालमा प्रख्यात भूगोलविध स्व.डा. हर्क गुरुङ्ग, ले रिङमो, फोकसुम्धो तालको नाम फोक्सुण्डो भनी नामाकरण गर्नु भएको रहेछ ।

त्यसरी नै सामुहिक छलफलद्धारा स्रोत नक्सामा गाउँ-टोल, फोक्सुण्डो ताल-झर्ना, वन, वोन धर्मसंग सम्बन्धित क्षेत्र, ठाउँ, रुख, गुम्बा, तालमा आउने हिम पानीको क्षेत्र, पाहा प्रजातीको उभयचर, अन्य सीमसार क्षेत्र र ऐतिहासिक कथनहरुबारे भन्ने व्यक्तिको घर-गाउँ स्रोत नक्सामा चित्रण गरिएको छ ।






**चित्र नं. ९:** फोक्सुण्डो तालको श्रोत नक्सा ।




चित्र नं. ३: फोक्सुण्डो तालको सिमसार श्रोतहरु -: सहभागितामुलक श्रोत नक्सा ।

## मौलिक दन्त्य कथा : प्रथम



फोक्सुण्डो गा.वि.स.-५, छेप्का निवासी ५४ वर्षीय श्री कर्म लामा र उनकी ५० वर्षीया श्रीमती निसर लामा फोक्सुण्डो तालको उत्पत्ति बारे आफ्नो ऐतिहासिक मौलिक दन्त कथा यसरी भन्नुहुन्छ-

"हामीले पनि हाम्रा बाबुबाजे संग फोक्सुण्डो ताल, झर्ना उत्पत्ति बारेमा कथा भनिदिन अनुरोध गरी सुने जानेका कुरा हो यो । परापूर्व कालमा तिब्बत तिरबाट भागेर एउटा राक्षसनी एउटा बाँसको ढुङ्ग्रोमा तेल र अर्कोमा पानी लिएर डोल्पा तिर आउन थालिछ । नबाटेको लामो केश, ठूला आँखा, डरलाग्दो अनुहार भएकी उक्त राक्षसनी उन्मुकताका साथ दौडदै आएको देखेर औतारी लामा रिङपुचेले अब यो राक्षसनीले मानव संसार नष्ट पार्ने भई भन्दै पछ्याउन थालेछन् । औतारी लामा रिङपुचेले आफुलाई पिछा गरिरहेको कुरा चाल पाएपछि राक्षसनी छिटो-छिटो दौडन थालिछ । उसको आफ्नो विचारमा भने डाँडा काँडा सबै बिगारी दिने रहेछ । उक्त राक्षसनी साल्दाङ्ग आइपुगेपछि उसले एउटा भेंडा गोठाल्नी केटीलाई त्यहाँ बाटोमा भेटिछ । त्यस भेंडा चराउने केटीलाई एउटा राम्रो तुथोको माला दिई बक्खुको फिदाभित्र राख्नु र म गएको कुरा कसैलाई नभन्नु ल भनी राक्षसनी त्यहाबाट तल झरिछ । उताबाट राक्षसनीलाई मार्न भनी लखेट्दै आएको औतारी लामा रिङपुचे पनि उक्त भेंडा चराउने केटी भएको ठाउँमा आईपुगेछन् । उसले भेंडा चराउने केटीलाई एउटा महिला यस बाटो भएर गएको कुरा देख्यौ भनि सोधेछन् तर त्यस राक्षसनीले नभन्नु भने झैं ती केटीले कोहि नदेखेको कुरा बताईछ । औतारी लामाले भने राक्षसनीको छल कपट थाहा पाएपछी उक्त केटीलाई आफ्नो बक्खुको फिदा देखाउन भनी अनुरोध गरी हेर्दा त एमनको अजिङ्गर उक्त केटीको कम्मरमा बेरिएको अवस्थामा लामाले देखेछ । यस्तो चाल पाएपछि केटी बेहोस भईछ ।



औतारी लामाले आफ्नो भएभरको विद्या प्रयोग गरी बेहोस केटीको होस फर्काउन र गाउँ-वासीहरुलाई उक्त अजिङ्गरबाट बचाउन समय लगाएछन् । अजिङ्गर भाग्यो भने सबै गाउँका पशु-लगायत मानव सबैलाई सखाप पार्ने भो भनी सोचेर आफ्नो विभिन्न विद्या अपनाएर औतारी रिङपुचे लामाले त्यस सर्पलाई मार्न सफल भएछन् । त्यसरी सर्प मारिएको ठाउँमा एउटा ताल उत्पन्न भएछ जसलाई नेल्डे सेन्थुप्राङ भनिन्छ । त्यस ठाउँमा त्री-पुराकोट मन्दिर र काइकोङ चौर छ, जहाँ जनावरहरुको हाड संकलन गरी थुपारीएको छ । साउन महिनाको पहिलो हप्ता त्यसैको संझनामा घोडा दौडाउने र पुजा गर्ने परम्परा यहाँ रहि आएको छ ।

आज भोली ताल भएको क्षेत्रमा रमाइलो फोक्सुण्डो गाउँ थियो । राक्षसनी उक्त गाउँ आइपुग्दा रात परेको हुँदा त्यसलाई त्यही गाउँमा बस्ने इच्छा भएछ र बस्नको लागि बास मागिछ तर कसैले बस्न दिएनछन् । धेरै प्रयत्न गरेपछि गुम्बामा लामाले राक्षसनीलाई बास बस्ने दिएछन् । राक्षसनीले आफ्ना



जामाको फेरोबाट कमेरो माटो (घर पोत्न/लिप्न प्रयोगमा ल्याइने सेतो माटो) ल्याउँदै उक्त रमाइलो गाउँ वरिपरि घेरा वा रेखी रातको मध्यान्न भन्दा अघि लगाइसकिछ । त्यसपछि उसले बाँसको ढुंग्रोमा ल्याएको पानी त्यहाँ घेरा भित्र पर्ने गरि खन्याइ दिएछ । पानी खन्याउँदै जांदा तत्कालै पोखरीको उत्पत्ति हुन गएछ घरहरु सबै डुब्दै हराउन थालेछन् । पालुवा बाख्रा, भेंडा, घोडा, च्याङग्रा, कुखुरा, बिरालो आदि पशु प्राणीहरु उक्त गाउँघरमा गाडिएको लुङ्गमा चड्दै कराउँदै - चिच्याउँदै भाग्ने प्रयास गर्न थालेछन् । कोहि भाग्न सफल भएछन् भने प्रायजसो डुबेर हराएछन् । मध्य रातको समय भएको हुँदा मानव कोहि पनि जीवित रहन पाएनछन् । आफ्नो वास बसेको गुम्बा क्षेत्रलाई चाहि कमेरे माटोको रेखा बाहिर पारी बाँसको ढुँग्रोबाट बोकि ल्याएको पानी खन्याउँदा उत्पन्न हुन गएको फोक्सुण्डो तालमा डुब्नबाट बचाएछ । उता औतारी लामा रिङपुचे चाँहि भेंडा चराउने बेहोस केटीलाई होशमा ल्याउन र विशाल सर्पलाई मार्ने कार्य गर्दा गर्दै ढिलाई हुन जाँदा राक्षसनीले सुन्दर मानव बस्तीलाई ताल बनाई सकेको देखे पछि रिसले चुर भई राक्षसनीलाई लखेट्न थालेछन् । अब लामाले मार्ने भो भन्ने डरले भाग्दै जाँदा राक्षसनी फापर बारीको छेउमा छिडाक भन्ने ठाउँमा आई पुगिछ । त्यसै ठाउँमा औतारी लामाले उक्त राक्षसनीलाई मारी उसको मुटु र कलेजो झिकी धारीलो हतियारले रोपिदिएछन् । राक्षसनी मारेको ठाउँमा खाल्टो परेको ठाउँ र कलेजोबाट बगेको रगत पानी भएको भन्ने विश्वास छ । टाउको आकारको ढिस्कनो अझै सम्म छ । गाउँ-घरमा लामाहरुले त्यस ठाउँको भुत लागी बिरामी भएको भनी सेवा गर्ने परम्परा हाम्रो समाजमा अझै सम्म पनि छ ।



राक्षसनीलाई मारेपछि औतारी लामा फर्केर फोक्सुण्डो ताल पुगेछन् । ताल पुगेपछि उसले मानव जीवन रहित फोक्सुण्डो ताल हेरी विचार गरेछन्, यो ताल भरिएर फुट्न पनि त सक्छ । यदि त्यसो हुन गयो भने जाजरकोट, सल्यान, सुर्खेत आदि जिल्लालाई नराम्रो गरी असर पार्ने कुरा थाहा पाएपछि पोखरीको एक छेउबाट निकास बनाएर बलियो चट्टान भएको क्षेत्र रोजी हालको झर्ना (छाल्छाप) को उत्पत्ति गरी पानी निकास हुने व्यवस्था मिलाएछन् । त्यसैगरी पहिरो नजाने ठाउँको छनोट गरी धारिलो हतियारले जमिनमा प्वाल पारी एकनासले पानी निकास हुने गरी तरिका अपनाएछन् ।

मौलिक इतिहास बोकेको फोक्सुण्डो ताल र झर्ना हाम्रा बाबु-बाजेकै पाला देखि उस्तै देखिन्छ । यस्तै कथनले होला गाउँलेहरु तिर्थ गर्न जाने आउने गर्दछन् । सम्झ्यो, ध्यान गऱ्यो भने धन, सम्पतिको दुःख, अभाव हुन्न भन्ने विश्वास छ । अमूल्य मौलिक परम्परामा आधारित फोक्सुण्डो ताल, झर्ना आदिको सृष्टिको बारेमा पूर्खाहरुले फुर्सदको समयमा आफ्ना नानी, नाती-नातिनी वा सन्तानलाई छाडी राख्नु भएको मौलिक कहानी पाउन कठीन भईसक्यो । त्यस्तो कथा भन्ने मानिसहरु अहिले समाजमा छैनन् र आज भोलिका नानीहरुले सुन्न पनि मन गर्दैनन् । हामी त हाम्रा बाबु-बाजेलाई पटक-पटक भन्न कर-काप गर्दथ्यौं । ”

समाजबाट हराउनु पूर्व सीमसार जैविक विविधता र पर्यावरण संरक्षणसंग सम्बन्ध राख्ने मौलिक ऐतिहासिक दन्त्य कथा, कहानी, घटनाक्रम, धर्म, भाषा, संस्कृति, संस्कार र परम्परा आदिको अध्ययन, अनुसन्धान गर्नुपर्ने आवश्यकता कर्म लामा ज्यूको कथनले पुष्टि गर्छ ।

तिब्बतबाट भागेर आएको र फोक्सुण्डो बासीले बास नदिएको रीसले गाउँ डुबाएर तालको सृष्टि गर्ने राक्षसनी मारिएको भौगोलिक ठाउँ र बाबु-बाजेद्वारा भनिएका मौखिक कथा सत्य नै भएको हुनुपर्छ भनी कर्म र निसर लामा बताउनु हुन्छ । किनकी उक्त ठाउँ आज पनि दुरुस्तै छ , मुटु, कलेजो र टाउको जस्ताको तस्तै देखिन्छ । नानी अथवा समाजका व्यक्तिहरु अस्वस्थ्य हुंदा लामाहरुले त्यस क्षेत्रमा भएको पिचास, भुत लागेको हुनाले विरामी भएको बताउनु हुन्छ । उनीहरुले मन्त्र गरेपछि सञ्चो हुने गरेको छ ।

औतारी लामा रिङपुचले अपनाएका शिप र ज्ञान अथवा रचनात्मक कार्य सीमसार क्षेत्रको संरक्षण र बुद्धिमता पूर्वक उपयोग गर्ने सिद्धान्तसंग मेल भएको हुंदा उक्त कथनले संरक्षण क्षेत्रमा महत्वपूर्ण शिक्षा प्रदान गरेको छ । त्यसैगरी कर्म र निसर लामाले पुर्ख्याउली कथा मौखिक रुपमा नै भए पनि बचाई सुनाउने परम्पराले संरक्षणमा योगदान पुऱ्याउनु भएको देखिन्छ । फोक्सुण्डो ताल छेउमै भएको हालको गाउँ पछि मात्र बसोबास भएको कुरा कर्म लामा भन्नु हुन्छ ।

रिङमो गाउँमा गरिएको छलफलमा गुम्बामा बस्नु हुने वोन पो धर्मका लामाहरु र गाउँका सहभागीहरु भन्नु हुन्छ-

**“तालको छेउमा रहेको रुख (स्रोत नक्सा) धर्मको लागि महत्वपूर्ण छ । त्यसको वरिपरि फोहर मैला गर्ने, जिउ नुहाउने, लुगा धुने र ढुंगा हान्ने जस्ता कार्य गर्न नहुने धार्मिक मान्यता रहेको छ । उपरोक्त क्षेत्रको पानी स्वच्छ र पवित्र मानिएको हुँदा पुजा-आजामा प्रयोग गर्न र गाउँको पश्चिम भागको उच्च पहाडमा रहेको धार्मिक स्थल (छोर्तेन) मा चढाउन यसै ठाउँको पानी लैजानु पर्ने धार्मिक परम्परा रहेको छ ।”**



आदिम कालिन वोन पो धर्म, संस्कृति, संस्कार, खाम भाषा बोल्ने रिङमो (फोक्सुण्डो) गाउँको शीरमा रहेको छोर्तेन नजिकै पुजा गर्ने ठाउँ र आगो बाल्ने चुलो धार्मिक रुपले महत्वपूर्ण मानिंदो रहेछ । गाउँको रक्षाको लागि सफा मन राखि नुहाएर पोखरीको पवित्र पानी लगी यस उच्च स्थानमा रहेको छोर्तेन र वरिपरिको देव देवताहरुको पुजा गर्ने परम्परा रहेको छलफलका सहभागीहरुले बताउनु भयो ।







## मौलिक दन्त कथा : द्वितिय



रिखे गाउँ निवासी वर्ष ८७ का दोर्जे गुरुङ्ग फोक्सुण्डो ताल र यसको वरिपरिको हिमाल र समाजका परम्परा बारे यसो भन्नु हुन्छ-

**"ताल वरिपरिको हिमाल (स्थानिय भाषामा छोमे ताल्मा भनिने) लाई धार्मिक भाषामा यहाँका लामा धर्म गुरुहरुले पहिला बोलाउने र तालको पवित्र जल लिई रिङमो गाउँ माथिको छोर्तेनमा गई दुई महिनाको एक पल्ट पुजा गर्ने परम्परा छ । गाउँघरमा रोग नलागोस्, भोकमरी नहोस्, लगाएको खेतीबाली सप्रियोस र पशु आदिको उत्पादन राम्रो होस् भनी सबै गाउँलेहरुले आ-आफ्नो गाउँबाट उवा, गँहुको पिठो, चामल, घिउ ल्याउने र त्यसको तोर्मा (स्थानिय भाषामा ढाके) बनाई लामाले देव देवीलाई चढाउने र प्रसादको रुपमा दिने परम्परा छ । आफु र परिवारजनहरुको स्वास्थ्य राम्रो होस्, लगाएको अन्न वाली सप्रियोस भन्दै तालको पानी तीन पल्ट पिउने र नमस्कार गरी विदा हुने चलन पुरानो हो ।"**



त्यस्तो पुरानो पुर्ख्याउली परम्परा पछि गाउँ-घर अथवा यस ठाउँमा पानी पर्ने विश्वास र वास्तवमा मौसम तत्कालै परिवर्तन हुने र हल्का वर्षा हुने गरेको तथ्य गहिरो विश्वासका साथ सहभागीहरुले बताउनु भएको थियो । पर्वतीय सीमसार संरक्षण र बुद्धिमतापूर्ण प्रयोगबारे जनचेतना मूलक तालिमको सहभागी रिङमो बासीहरु भन्नु हुन्छ-




**"विश्व सम्पदा सुचीमा हाम्रो यो पवित्र र सबैभन्दा गहिरो ताल सुचिकृत भएमा हामी खुशी हुने थियौं। धार्मिक परम्पराले फोहर मैला गर्न नहुने तालको यसै क्षेत्रमा यार्सा गुम्बा टिप्न आउने व्यक्तिहरुले खाना पकाउने, नुहाउने र लुगा धुने गरिदिनाले ताल फोहर भईरहेको छ ।"**

आदिम कालिन ऐतिहासिक, मौलिक र मौखिक कहानी, धर्म, संस्कार र संस्कृतिको लागि महत्वपूर्ण मानिएको सुन्दर फोक्सुण्डो ताल स्थानीय समुदाय र देशकै अनुपम प्राकृतिक सम्पत्ति हो । अतएव सांस्कृतिक, पर्यावरण, परम्परागत मान्यता सम्बन्धि अध्ययन, संरक्षण शिक्षा, सुचना र जनचेतना बढाउनु पर्ने आवश्यक देखिन्छ ।

मौलिक कथन अनुसार रिङमो वा फोक्सुम्धो वा फोक्सुण्डो तालको उत्पत्ति भन्दा पहिला देखि भएको वोन पो धर्मको गुम्बा तालको छेउमा नै अवस्थित छ । रिङमो गाउँको पारी एकान्त रमणीय हिमाली जंगलको छेउमा रहेको गुम्बा धार्मिक, सांस्कृतिक, ऐतिहासिक र पर्यावरणीय रुपले पनि महत्वपूर्ण देखिन्छ ।













धार्मिक ज्ञान, भावना, सुन्दरता, तालमा पौड्ने, डुब्लुकी मार्ने पानी हाँस (स्थानिय भाषामा ङम्बा), जंगली जनावर, पंक्षीहरुको सुरिलो आवाज र परिवर्तित तालको रुप र अनुपम धार्मिक गुम्बा आफैंमा असाध्यै मनमोहक देखिन्छ । उक्त पवित्र स्थलमा रहेका छोर्तेनका भित्ताहरुमा कुंदिएका पंक्षी वन्यजन्तु आदिको चित्र र छोर्तेन माथि राखिएको झोप्केको टाउको र सीङ्गले जैविक विविधता र वोन पो धर्म-परम्पराको गहिरो सम्बन्ध रहेको देखाउँछ । जैविक विविधता, धर्म र संस्कृति झल्काउने गरी ढोका, झ्याल आदिको चौकस, दलानमा कुंदिएका कला र ज्ञानको संरक्षण, प्रवर्धन र अध्ययन गरी जनचेतना शिक्षा सञ्चालन गर्नु पर्ने देखिन्छ ।









रिङमो गाउँ-घरमा रहेको कलात्मक आकृति, छेप्का गाउँको घरमा भएका वन्यजन्तु र संस्कृति झल्काउने गरी कुंदिएका बुट्टाहरूले परम्परा, जैविक विविधता र वन्यजन्तु आदिको सम्बन्ध देखाउँछ ।

काई गाँउ वार्ड नं. ३ बस्ने ६२ वर्षिय गेसे तेन्जीङ्ग निमा ओसर लामा धार्मिक तथा ऐतिहासिक महत्वको भण्डार फोक्सुण्डो ताल देखाउँदै भन्नु हुन्छ-

**"यो धार्मिक तालको पानी पवित्र छ । कहिले कुन रंङ्ग त कहिले कुन रंङ्ग परिवर्तन गर्ने यस ताल अत्यन्तै गहिरो हुनुपर्छ । यस तालमा दुई हिमालबाट हिउँ पग्ली आउने सानो सानो खोला छ । दुबै ठाँउबाट आएको पानी भन्दा ठूलो रुपमा वगेर जाने तालको पानी अध्ययन गर्दा तालको भित्र भागबाट तालमा पानी आएको हुनुपर्छ । ऐतिहासिक र धार्मिक परम्पराले मानी आएको यस तालको पानी पवित्र, निर्मल र स्वास्थ्यको लागि पनि उपयोगी छ । आफ्नो मनको भावना पोख्ने प्राकृतिक सुन्दरता ताल वोन पो धर्म र परम्पराको लागि ऐतिहासिक थलोको प्रतीकको रुपमा चिनिन्छ ।"**





पवित्र सुन्दर हिमालको कोखमा अटल भई बसेको ऐतिहासिक तथा वोन पो धार्मिक परम्पराको प्रतिक फोक्सुण्डो ताल र झरना साथै भौगोलिक तथा जैविक विविधताको धनी डोल्पोमा फोक्सुण्डो महोत्सव २०६४ आयोजना गरिएको थियो । उक्त महोत्सवमा प्रस्तुत गरिएका धार्मिक, सांस्कृतिक तथा लोक नृत्य आदिले पानी, ताल, झर्ना, पर्यावरण, वन्यजन्तु, जैविक विविधता र संरक्षणको महत्व बारे प्रष्ट गरेको थियो । धार्मिक पुजारी लामाहरु महोत्सव शुरु हुन केहि दिन अगाडी देखि नै आफ्नो धर्म र परम्परागत पुजा-पाठ गर्नुहुँदै थियो । वोन पो धर्म देउताको शुद्ध मनले पुजा गरि सकेपछि ताल वरिपरिको देवता, भुतप्रेत आदिको ध्यान गर्दै, वहाँहरुको मान - मनितो गर्दै कुनै अनिष्ट घटना नहोस् भन्दै लामा आफ्नो देवताहरुलाई पिठो, चामल अर्पण गर्दै हुनुहुन्थ्यो । कुनै शुभकार्य शुरु गर्नु पूर्व ताल वरिपरि रहेको देउताहरुको सम्झना र बल माग्ने हाम्रो ताल, पानी, भूमि संगको अपरम्पार सम्बन्ध हुन्छ भनि धर्म गुरु लामाहरु भन्नु हुन्छ ।

वोन पो धर्म र सांस्कृतिक अनुबन्धीत नृत्यले "समाज, परम्परा र पर्यावरणको महत्व झल्काउन खोजिएको कुरा सहभागीले बताउनु भयो ।

महोत्सवमा प्रकृति, वातावरण, परम्परा र फोक्सुण्डो तालको महिमा सामुहिक प्रार्थनाले पर्यावरणको ज्ञान दर्शाईरहेको देखिन्थ्यो । स्थानिय भेष भुषा र पहिरनमा प्रस्तुत गरिएको नृत्यले त्यस ठाउँको मानिस र उनीहरुको कृषि प्रणालीसंगको जीवन शैली देखाउन खोजीएको कुरा सहभागीले बताउनु भयो ।











# जैविक विविधता, सीमसार र संरक्षण

भौगोलिक विविधता र विकटताका वावजुद आफ्नो स्थापना कालदेखि स्थानीय वासिन्दाहरुसंग जैविक विविधता संरक्षण क्षेत्रमा शे-फोक्सुण्डो राष्ट्रिय निकुञ्ज र राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभागको योगदान महत्वपूर्ण देखिन्छ ।

भौगोलिक अवस्था अनुसार पारिस्थिकिय प्रणालीमा विविध वन्यजन्तु, वनस्पति, पंक्षी, जलचर, उभयचर आदि पाईन्छ । अध्ययन गर्ने क्रममा सुन्दर प्रकृतिका फूल र औषधि तथा सांस्कृतिक कार्यमा उपयोग हुने फल (किराँत भाषामा चिम्फ्रीङ्ग) उक्त निकुञ्जमा पत्ता लगाइयो । मौसम अनुसार ढकमक्क फूलिरहेको सुनाखरी परिवार भित्र पर्ने फूल र त्यसै गरी पूर्ण चन्द्रमाको शीतल उज्यालो हेर्न असाध्यै इच्छुक थरी-थरीका च्याउहरुको अध्ययन पनि गर्न पाइयो ।

जिवीकोपार्जन गर्न संकलन हुने बहुमूल्य यार्सा गुम्बा (जीवन बुटी) को निमित्त डोल्पा जिल्ला महत्वपूर्ण छ । त्यसैगरी अनगिन्ती रुपमा जडीबुटीहरु फोक्सुण्डो ताल जाने बाटो वरिपरि निकुञ्ज भित्र भेटिएका थिए ।















फोक्सुण्डो ताल वरिपरि जडिबुटि चिन्ने र जान्ने तरिका बताउँदै आम्ची श्री लामा भन्नु हुन्छ-

> **"हामीहरु यसरी नै औषधी तयार गरी गाउँ-घरका बासिन्दाहरुलाई स्वास्थ्य उपचार गर्छौ । यस ठाउँमा बहुमूल्य औषधि पाउन सकिन्छ त्यसैले आउने युवा वर्गहरुले यस्तो कार्यमा सहभागी भएमा राम्रो हुने थियो भन्ने हाम्रो इच्छा छ ।"**



त्यसैगरी घोरल, रतुवा मृग, चितुवा, ब्वाँसो, भालु, कस्तुरी मृग, हिउँ चितुवा, नाउर (फोक्सुण्डो-पाखामा देखिएको), थार साथै पंक्षीहरुमा वन परेवा (मलेवा), हिमाली काग, ढुकुर, कोकले, पानीहाँस, लाटोकोसेरो आदि पनि त्यसै ठाउँमा पाउने सहभागीहरुबाट थाहा भयो । भिर-मौरी र फोक्सुण्डो तालको एक कुनामा हिमाली पाहा पनि पाइन्छ भनी अर्को सहभागीले बताउनु भयो ।



फोक्सुण्डो तालकै छेउमा रहेका गाउँ वासीहरुले उवा, तोरी, फापर, आलु र मुला प्रजातीको तरकारी परम्परागत रुपमा नै खेती गरी आएको तथ्य बताउनु हुन्छ । पुरानै विउ रोप्छौं, मिठो हुन्छ भन्नु हुन्छ स्थानिय बासी गुरुङ्ग महिला । उहाँहरुको परम्पराले कृषि जैविक विविधता संरक्षणमा योगदान पुगेको देखिन्छ ।



विभिन्न कोणबाट अध्ययन, गाँउलेहरु संग सामुहिक छलफल, व्यक्तिगत ऐतिहास धार्मिक व्यक्तिहरु संग छलफल, उनिहरुको फोक्सुण्डो ताल बारेको इतिहास, परम्परा, धार्मिक मान्यता, व्यवहार र स्थलगत अध्ययन गर्दा फोक्सुण्डो ताल मुटुको रुपमा रहेको प्रष्ट हुन आउँछ ।

तालको छेउमा रहेको रुख वरिपरि रुखको हाँगा भाच्न नहुने, ढुंगा हान्न, शिकार, फोहर मैला गर्न नहुने धार्मिक मान्यता, तालको पानी पवित्र मान्ने र पुर्खाले छाडेको अन्न रुचाउने परम्पराले सीमसार तथा जैविक विविधता संरक्षणमा अमूल्य योगदान पुऱ्याएको उदाहणहरु हुन् ।









सुन्दर झर्ना
मौलिक परम्परा, धर्म संस्कृतिको धरहरा
कोपिला झैं पवित्र हिमाली
कोखमा लमतन्न परेको
डोल्पाली फोक्सुण्डो ताल
"प्रस्तावित रामसार क्षेत्र"

WWF Nepal acknowledges with gratitude the support received for the Freshwater Program from all our partners, donors and supporters:
Government of Nepal; Ministry of Forests and Soil Conservation (MFSC); Department of National Parks and Wildlife Conservation (DNPWC); Department of Forests (DoF); Department of Plant Resources; Water and Energy Commission Secretariat (WECS); WWF International; WWF UK; WWF US; WWF Netherlands; WWF Finland; WWF Sweden; Swedish International Development Cooperation Agency (SIDA); International Water Management Institute (IWMI); and Community Based Organizations




२०२९ सालमा नेपालले राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण ऐनको निर्माण गरेर वन्यजन्तु संरक्षणको आधुनिक युगमा प्रवेश गरेको थियो। राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको ९ वटा राष्ट्रिय निकुन्ज, ३ वटा वन्यजन्तु आरक्ष, ३ वटा संरक्षण क्षेत्र र १ वटा शिकार आरक्ष लगायत ९ वटा मध्यवर्ती क्षेत्रको सञ्जाल रहेको छ। यी सबै गरेर नेपालको कूल भू-भागको १९.४ प्रतिशत अर्थात २८,५८५.६७ वर्ग कि.मि. क्षेत्रफल ओगटेको छ।

राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको प्रमुख उद्देश्यहरुमा नेपालका बहुमूल्य तथा विभिन्न वन्यजन्तु तथा वनस्पति तथा भू-दृश्यको संरक्षण, सुरक्षा एवं पुर्नोत्थान गर्नु रहेको छ।

सन् १९८७ मा नेपाल रामसार महासन्धीको सदस्य राष्ट्र भएको थियो। राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभाग यस महासन्धीको नेपाल कार्यान्वयन गर्ने प्रमुख निकायको रुपमा रहेको छ।

जैविक विविधताको संरक्षणका निम्ति सन् १९६१ मा स्थापना गरिएको डब्लु डब्लु एफ एक अन्तर्राष्ट्रिय गैरसरकारी संस्था हो। स्वीट्जरल्यान्डको ग्लँमा केन्द्रिय कार्यालय रहेको यो संस्था ९० भन्दा बढी राष्ट्रहरुमा क्रियाशील छ। डब्लु डब्लु एफ एक स्वतन्त्र, गैरसरकारी, गैरराजनितिक, गैरधार्मिक र नाफारहित संस्था हो।

डब्लु डब्लु एफले विश्वको प्राकृतिक वातावरणलाई निम्नीकृत हुनबाट जोगाई तल उल्लिखित कार्यहरूमार्फत मानिस र प्रकृतिबीच सामञ्जस्य रहने भविष्यको निर्माण गर्ने ध्येय राख्दछ :

- विश्वको प्राकृतिक विविधता जगेर्ना गरेर,
- पुनः प्रयोजनमा आउने प्राकृतिक स्रोतको दिगोपनलाई सुनिश्चित गरेर,
- प्रदूषण र अपव्ययी उपभोग न्यून गरेर।



**राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग**
पो.ब.नं. ८६०, बबरमहल, काठमाडौं, नेपाल
फोन: ९७७-१-४२२०८५०, ४२२०९१२, ४२२७९२६
फ्याक्स: ९७७-१-४२२६६७५
ई-मेल: dnpwc@bdcin.wlink.com.np
वेबसाइट: www.dnpwc.gov.np



**डब्लु डब्लु एफ नेपाल**
**स्वच्छ जलसम्पदा कार्यक्रम**
पो.ब.नं. ७६६०, बालुवाटार, काठमाडौं, नेपाल
फोन: ९७७-१-४४३४८२०, ४४३४९७०, ४४१०९४२
फ्याक्स: ९७७-१-४४३८४५८
ई-मेल: info@wwfnepal.org
वेबसाइट: www.wwfnepal.org
www.panda.org/freshwater